शिक्षा मन्त्रालय
शैक्षिक जनशक्ति विकास केन्द्र

# वार्षिक कार्यक्रम कार्यान्वयन पुस्तिका

## आ.व. २०६८/०६९

१. कार्यक्रम पठाइएको व्यहोराको पत्र
२. खर्चगर्ने अख्तियारी
३. स्वीकृत वार्षिक कार्यक्रम तथा बजेट
(योजना आयोगबाट छाप लगाएको प्रतिसमेत)

सानोठिमी, भक्तपुर
२०६८

# वार्षिक कार्यक्रम कार्यान्वयन पुस्तिका-२०६८/०६९

## परिचय एवम् समग्र निर्देशन

यस शीर्षक अन्तर्गत शिक्षकको पेसागत विकास (टिपिडी) मोड्युल लगायतका देहायअनुसारका कार्यक्रमहरु शैक्षिक जनशक्ति विकास केन्द्रले जारी गरेको शिक्षकको पेसागत विकास कार्यक्रम कार्यान्वयन पुस्तिका-२०६६ तथा केन्द्रबाट पटकपटक यस सम्बन्धि जारी गरिएका र गरिने परिपत्र र शैक्षिक तालिम केन्द्रहरुद्वारा उपलब्धि हुने प्राविधिक सहजीकरण बमोजिम **मात्र** सञ्चालन व्यवस्था मिलाउनु पर्नेछ । शासकीय सहजताकालागि जिशिकाबाट व्यवस्थापकीय सहजीकरण एवम् स्रोतकेन्द्र/अगुवा स्रोतकेन्द्रहरूबाट प्रत्यक्ष मोड्युल सञ्चालन र शैताकेहरूबाट प्रत्यक्ष मोड्युल सञ्चालनका साथै क्षमता विकास कार्य सम्पादन गर्ने गरी मूलतः त्रीपक्षीय सहकार्य को अनुपम संयोजन मिलाई टिपिडी कार्यान्वयनमा सामूहिक स्वामित्व, जवाफदेही र सङ्लग्नता सुनिश्चित गरिएको छ । तसर्थ, वर्तमान सन्दर्भमा यि तिनै (३) प्रकारका नियकाहरुबाट संयुक्त रूपमा कार्यसम्पादन गर्ने विशेष सहकार्य संरचना अर्न्तगत नौलो अनुभव र सर्वस्वीकृत उपलब्धी हासिल गर्न अग्रसर हुनैपर्ने आवश्यकता छ । साथै, देहायअनुसारका वार्षिक कार्यक्रम कार्यान्वयन गर्दा निर्धारित कार्य प्रकृयाका अतिरिक्त अनुसूची-१ बमोजिमका मार्ग निर्देशनलाई अनिवार्य रूपमा अनुसरण गर्नुपर्ने छ ।

| *कम्पोनेन्ट नं./मुख्यमुख्य क्रियाकलाप/कार्यान्वयन विधि* | *जिम्मेवार/ निकाय* | *समयावधि/ चौमासिक* | *अनुगमन/परिणाम सूचक* |
|---|---|---|---|
| **५. शिक्षक शिक्षा तथा विकास** | | | |
| **व.उ.शि.नं. ३५०८०३** | | | |
| *५.१ स्रोतकेन्द्रबाट आधारभूत तहको शिक्षकको पेशागत विकास मोड्युल सञ्चालन (१० दिने)* | | | |
| (क) जिल्लामा रहेका प्रत्येक स्रोतकेन्द्रअर्न्तगतमा कार्यरत सबै आधारभूत तहका (कक्षा १-८ अध्यापन गर्ने) शिक्षकहरू मध्ये ४२% शिक्षक सङ्ख्याले हुन आउने अनुसूची-२ बमोजिमको जिल्लागत कोटा र प्रतिव्यक्ति लागत रु ३२००/- का दरले बजेट निर्धारण गरी तालिम समन्वय समितिको निर्णयबाट प्रत्येक स्रोतकेन्द्रमा सो अनुसारको कोटा र बजेट सहित कार्ययोजना जारी गर्ने । | जिशिका | प्रथम-तेस्रो | स्वीकृत बजेट तथा कार्यक्रम प्राप्त हुनासाथ वार्षिक टिपिडी कार्ययोजना प्रत्येक स्रोतकेन्द्रमा उपलब्ध हुने । |
| (ख) स्वीकृत वार्षिक कार्यक्रम प्राप्त भए लगतै टिपिडी कार्यान्वयन पुस्तिका-२०६६ का आधारमा मोड्युल सञ्चालनको सम्पूर्ण कार्यखण्डहरुमा शिक्षक, प्रअ, विद्यालय व्यवस्थापन समिति, विद्यार्थी, स्रोतकेन्द्र, अगुवास्रोतकेन्द्र, शैताके र जिशिकाहरुको सरोकार एवम् भूमिकाका वारेमा विशेष सामग्री तयार गरी स्थानीय रेडियो/एफएमबाट/पत्रपत्रिकाबाट प्रसारण गरी खुला अभिमुखीकरण व्यवस्था गर्ने । | जिशिका/ शैताके | प्रथम-तेस्रो | टिपिडीको महत्व र सञ्चालन प्रकृया वारे सबै सरोकार पक्षहरु सुसुचित हुने । |
| (ग) स्रोतकेन्द्र, अगुवास्रोतकेन्द्र र शैक्षिक तालिम केन्द्रहरुबाट टिपिडी मोड्युलहरु शैक्षिक जनशक्ति विकास केन्द्रबाट जारी गरिएको शिक्षकको पेसागत विकास कार्यक्रम कार्यान्वयन पुस्तिका-२०६६ ले निर्दिष्ट गरेको कार्यविधि बमोजिम टिपिडी आवश्यकता प्रशोधन, आवश्यकता प्रस्ताव तयारी, मोड्युल सामग्री विकास, सहभागी छनोट, मोड्युल सञ्चालन (तालिम-कार्यशाला खण्ड, स्वाध्ययन अभ्यास खण्ड र शैक्षिक परामर्श खण्ड) तथा प्रमाणीकरण जस्ता कार्यखण्डहरु अनिवार्य रुपमा सम्पादन गरी सञ्चालन गरिएको हुनुपर्ने छ । त्यसरी सञ्चालित मोड्युलहरू सम्पन्न गर्ने शिक्षकहरुलाई मात्र मोड्युल सम्पन्न प्रमाण-पत्र व्यवस्था गर्न सकिने व्यवस्था छ । यस भन्दा अन्यथा कार्यविधि अवलम्वन गरी सञ्चालन गरिने कुनै पनि प्रकारका तालिमका लागि "आधारभूत र माध्यमिक तहका लागि शिक्षकको पेसागत विकास मोड्युल सञ्चालन (१० दिने)" शीर्षकमा स्वीकृत बजेट खर्चगर्न नपाइने र टिपिडी मौड्युल सम्पन्न प्रमाण-पत्र प्रदान गर्न नपाइने गरी व्यवस्था मिलाउने | जिशिका/ स्रोतकेन्द्र | प्रथम-तेस्रो | टिपिडी कार्यान्वयन पुस्तिकामा निर्दिष्ट कार्यविधिको अनुसरण गरी उच्च गुणस्तरका साथ ६६७७७ जना आधारभूत तहका शिक्षकहरुले १० दिने टिपिडी मोड्युल पुरा गरेको हुने |

| कम्पोनेन्ट नं./मुख्यमुख्य क्रियाकलाप/कार्यान्वयन विधि | जिम्मेवार/निकाय | समयावधि/चौमासिक | अनुगमन/परिणाम सूचक |
|---|---|---|---|
| (घ) विद्यालयमा न्युनतम् योग्यता सहित जुनसुकै प्रकारको नियुक्ति पाई कार्यरत सवै शिक्षकहरु र जुन तहमा हाल अध्यापन जिम्मेवारी पाएको छ त्यसै तहको मोड्युलमा भाग लिन पाउने मापदण्डलाई दृष्टिगत गरी आवश्यकता प्रोफायल तयारी, सहभागी छनोट तथा मोड्युल सञ्चालन व्यवस्था मिलाउने । | स्रोत केन्द्र | प्रथम-तेस्रो | विद्यालयद्वारा हवहरुमा प्रेषित आवश्यकता प्रस्तावका आधारमा सहभागी शिक्षक छनोट भएको हुने । |
| (ङ) प्रत्येक मोड्युल सञ्चालन गर्ने तालिम कार्यशाला खण्डको प्रथम दिन प्रथम सेसनमा सवै सहभागीहरुलाई १।१ प्रतिका दरले मोड्युल सामग्री (स्रोत सामग्री सहितको) वितरण व्यवस्था गर्न सक्ने गरीका पूर्ण तयारीका साथ मोड्युल सञ्चालन गर्ने । | जिशिका/ स्रोतकेन्द्र | प्रथम-तेस्रो | प्रत्येक सहभागीले मोड्युल सामग्री सहित मोड्युलका ३ ओटै खण्ड पुरा गरेको हुने । |
| (च) प्रत्येक १० दिने मोड्युलका तीनओटै भागहरु पूरा गरेका शिक्षकहरुलाई शैक्षिक जनशक्ति विकास केन्द्रद्वारा पठाइएका मोड्युल सम्पन्न प्रमाणपत्र जारी गर्ने (अगुवास्रोतकेन्द्र स्थित स्रोतकेन्द्रको हकमा समेत) । | स्रोत केन्द्र | प्रथम-तेस्रो | मोड्युल पुरा गर्ना साथ सबै शिक्षकहरुले प्रमाणपत्र पाएको हुने । |
| (छ) सेवाक्षेत्र भित्रका १० दिने मोड्युल पुरा गरेका शिक्षकहरु कार्यरत सवै विद्यालयहरुको TIP उपलब्धि विवरण प्रत्येक वर्षको वैशाख र कार्तिकमा सङ्कलन गरी हव स्तरीय समष्टिगत प्रतिवेदन तयार पारेर जिशिका र शैताके समक्ष पेश गर्ने । | स्रोतकेन्द्र | प्रथम-तेस्रो | प्रत्येक स्रोतकेन्द्रबाट ६।६ महिनामा जिशिका र शैताकेका समष्टिगत TIP उपलब्धी प्रतिवेदन प्रयोगका लागि उपलब्ध हुने । |
| (ज) आफ्नो केन्द्रका लागि खटिएका सीएफओसँग सहकार्य गरी संयुक्त, रुपमा प्रत्येक वर्ष सेवाक्षेत्र भित्रका कम्तिमा १०।१० जना शिक्षकहरुलाई अन्तर विद्यालय भ्रमण गराउने । | स्रोतकेन्द्र/ सिएफओ | प्रथम-तेस्रो | प्रत्येक वर्ष १० जना आधारभूत तहका शिक्षकहरुले अन्य ५ ओटासम्म विद्यालयहरुको अध्ययन भ्रमण सम्पन्न गर्ने । |
| (झ) टिपिडी मोड्युलको भाग-२ : स्वध्ययन अभ्यास खण्ड र भाग-३ः शैक्षणिक परामर्श खण्ड अन्र्तगत तोकिएका परियोजना कार्यहरू सहभागी शिक्षकहरूबाट उच्च कार्यकुसलताका साथ सम्पन्न गर्न नसकेमा वा यस्तो कार्यमा वेवास्ता गरेको ठोस आधार पाईएमा त्यस्ता शिक्षकहरूलाई मोड्युल सम्पन्न प्रमाण-पत्र प्रदान नगर्ने र पछि त्यस्ता शिक्षकहरूले प्रमाण-पत्र पाउन अनुरोध गरेमा विशेष सहुलियतका रूपमा तालिम हवले पुनः परियोजना कार्यहरू तोकी त्यसको उच्च कार्यकुशलताका साथ सम्पन्न गरेको आधारमा प्रमाण-पत्र जारी गर्ने विशेष व्यवस्था लागू गर्ने र यसका लागि सहभागीहरुको आतेजाते लगायत कार्यका लागि हुने खर्च निजहरु स्वयमले व्यहोरनुपर्ने व्यवस्था मिलाउने । | स्रोतकेन्द्र/ जिशिका | प्रथम-तेस्रो | मोड्युलको तीनओटै भागहरु उच्च कार्यकुशलताका साथ नगर्ने सहभागीहरुले प्रमाण-पत्र नपाउने व्यवस्था कायम रहने । |
| (ञ) अनुसूची-३ बमोजिमका शीर्षकगत खर्च विवरणअनुसार टिपिडी मोड्युल सञ्चालनको सम्पूर्ण खर्च व्यवस्था मिलाउने । | स्रोतकेन्द्र/ जिशिका | प्रथम-तेस्रो | खर्चको मापदण्ड एवम् प्रकृयागत स्पष्टता सहित पारदर्शि ढङ्गले बजेट उपयो भएकौ हुने । |
| *५.२ आधारभूत तहमा बहुभाषिक विद्यार्थी अध्ययन गर्ने कक्षामा शिक्षण गर्ने र विषयका रुपमा विभिन्न मातृभाषा शिक्षण गर्ने शिक्षकहरुका लागि टिपिडी आवश्यकता पुरा गर्ने गरी १० दिने पेसागत विकास तालिम सञ्चालन* | | | |
| क) शैक्षिक जनशक्ति विकास केन्द्रद्वारा तोकिएको मापदण्ड र तयार गरिएको शिक्षक प्रोफाइल अनुसार दुई वा दुई भन्दा बढी स्थानीय भाषाहरुकौ माध्ययन प्रयौग गरी अध्यापन गर्ने शिक्षकहरु र विषयका रुपमा स्थानीय मातृ भाषा शिक्षण गर्ने शिक्षकहरु पहिचान गरी सम्बन्धित विषयको तालिमका लागि छनोट गर्ने । | जिशिका | प्रथम-दोस्रो | शिक्षक प्रोफायलमा उल्लेखित कोटा र मापदण्ड अनुसार दुवै प्रकारको तालिमका लागि ६३६० जना सहभागी छनोट हुने । |
| ख) शैक्षिक जनशक्ति विकास केन्द्रले शिक्षक प्रोफायलका आधारमा तालिम कोटा, बजेट र तालिम सामग्री पठाएपछि त्यसका आधारमा तोकिएको स्रोतकेन्द्र/केन्द्रबाट प्रशिक्षक प्रशिक्षण प्राप्त प्रशिक्षकहरुद्वारा टिपिडीको आवश्यता | स्रोतकेन्द्र/ शैताके | प्रथम-दोस्रो | ६३६० जना आधारभूत तहका शिक्षकहरुले उल्लेखित दुई प्रकारका |

| कम्पोनेन्ट नं./मुख्यमुख्य क्रियाकलाप/कार्यान्वयन विधि | जिम्मेवार/ निकाय | समयावधि/ चौमासिक | अनुगमन/परिणाम सूचक |
|---|---|---|---|
| पुरा गर्ने गरी विशेष क्षमता विकास तालिमका रूपमा १० दिने तालिम एकै पटक (at a stretch)तालिम सञ्चालन गर्ने । | | | मध्ये कुनै एक प्रकारको तालिम कोर्स पुरा गरेको हुने । |
| *५.३ आधारभूत तहमा बहुभाषिक विद्यार्थीहरु अध्ययन गर्ने कक्षामा शिक्षण गर्ने र विषयका रुपमा विभिन्न मातृभाषा शिक्षण गर्ने शिक्षकहरुका लागि टिपिडीको आवश्यकता पुरा गर्ने गरी १० दिने पेसागत क्षमता विकास तालिम सञ्चालनका लागि प्रशिक्षक प्रशिक्षण सञ्चालन* | | | |
| (क) उपशीर्षक ५.२ अन्तर्गतका दुवैप्रकारका तालिमका लागि तोकिएको सङ्ख्यामा स्रोतकेन्द्र र जिल्ला शिक्षा कार्यालयबाट उपयुक्त उम्मेदवार छनोट गरी प्रशिक्षक प्रशिक्षण कार्यक्रममा खटाउने व्यवस्था मिलाउने । | जिशिका | प्रथम-दोस्रो | योग्यता पुगेका मध्ये १५० जना सहभागी मनोनयन भएको हुने । |
| (ख) छनौट भई आएका सहभागीलाई शैक्षिक जनशक्ति विकास केन्द्रबाट उपलब्ध हुने तालिम सामग्रीका आधारमा मात्र प्रशिक्षक प्रशिक्षण सञ्चालन गरी त्यसको उपलब्धि, अनुभव र भावी कार्यदिशा उल्लेखित प्रतिवेदन केन्द्रमा पेस गर्ने । | शैताके : सुनसरी, धनुषा, काभ्रे, तनहुँ, सुर्खेत र कञ्चनपुर | प्रथम-दोस्रो | १५० जना प्रशिक्षकहरुले १ हप्ते प्रशिक्षक प्रशिक्षण कोर्स पुरा गरेको विवरण सहितको प्रतिवेदन केन्द्रमा उपलब्ध हुने । |
| *५.४ अगुवा स्रोतकेन्द्र/शैताकेबाट माध्यमिक तहको शिक्षकको पेसागत विकास मोड्यूल सञ्चालन (१० दिने), (जिल्ला/शैताके)* | | | |
| (क) जिल्लामा रहेका कार्यरत सबै माध्यमक तहका (कक्षा ९-१० अध्यापन गर्ने) शिक्षकहरू मध्ये ४६.८% शिक्षक सङ्ख्याले हुन आउने गरी कोटा र प्रतिव्यक्ति लागत रु ४४००/- का दरले बजेट निर्धारण गरी तालिम समन्वय समितिको निर्णयबाट प्रत्येक अगुवास्रोतकेन्द्रमा सो अनुसारको कोटा र बजेट वितरण गर्ने । | जिशिका | प्रथम-तेस्रो | अगुवा स्रोतकेन्द्रमा तोकिए बमोजिमको कोटा र बजेट यथा समयमा उपलब्ध भएको हुने । |
| (ख) स्वीकृत वार्षिक कार्यक्रम प्राप्त भए लगतै टिपिडी कार्यान्वयन पुस्तिका-२०६६ का आधारमा मोड्युल सञ्चालनको सम्पूर्ण कार्यखण्डहरुमा शिक्षक, प्रअ, विद्यालय व्यवस्थापन समिति, विद्यार्थी, स्रोतकेन्द्र, अगुवास्रोतकेन्द्र, शैताके र जिशिकाहरुको सरोकार एवम् भूमिकाका वारेमा विशेष सामग्री तयार गरी स्थानीय रेडियो/एफएमबाट/पत्रपत्रिकाबाट प्रसारण गरी खुला अभिमुखीकरण व्यवस्था गर्ने । | जिशिका/ शैताके | प्रथम-तेस्रो | टिपिडीको महत्व र सञ्चालन प्रकृया वारे सबै सरोकार पक्षहरु सुसुचित हुने । |
| (ग) स्रोतकेन्द्र, अगुवास्रोतकेन्द्र र शैक्षिक तालिम केन्द्रहरुबाट टिपिडी मोड्युलहरु शैक्षिक जनशक्ति विकास केन्द्रबाट जारी गरिएको शिक्षकको पेसागत विकास कार्यक्रम कार्यान्वयन पुस्तिका-२०६६ ले निर्दिष्ट गरेको कार्यविधि बमोजिम टिपिडी आवश्यकता प्रशोधन, आवश्यकता प्रस्ताव तयारी, मोड्युल सामग्री विकास, सहभागी छनोट, मोड्युल सञ्चालन (तालिम-कार्यशाला खण्ड, स्वाध्ययन अभ्यास खण्ड र शैक्षिक परामर्श खण्ड) तथा प्रमाणीकरण जस्ता कार्यखण्डहरु अनिवार्य रुपमा सम्पादन गरी सञ्चालन गरिएको हुनुपर्ने छ । त्यसरी सञ्चालित मोड्युलहरू सम्पन्न गर्ने शिक्षकहरुलाई मात्र मोड्युल सम्पन्न प्रमाण-पत्र व्यवस्था गर्न सकिने व्यवस्था छ । यस भन्दा अन्यथा कार्यविधि अवलम्वन गरी सञ्चालन गरिने कुनै पनि प्रकारका तालिमका लागि "आधारभूत र माध्यमिक तहका लागि शिक्षकको पेसागत विकास मोड्युल सञ्चालन (१० दिने)" शीर्षकमा स्वीकृत बजेट खर्चगर्न नपाइने र टिपिडी मौड्युल सम्पन्न प्रमाण-पत्र प्रदान गर्न नपाइने गरी व्यवस्था मिलाउने । | अगुवास्रोतकेन्द्र / शैताके | प्रथम-तेस्रो | टिपिडी कार्यान्वयन पुस्तिकामा निर्दिष्ट कार्यविधिको अनुसरण गरी उच्च गुणस्तरका साथ १०१३५ जना माध्यमिक तहका शिक्षकहरुले १० दिने टिपिडी मोड्युल पुरा गरेको हुने |

| कम्पोनेन्ट नं./मुख्यमुख्य क्रियाकलाप/कार्यान्वयन विधि | जिम्मेवार/ निकाय | समयावधि/ चौमासिक | अनुगमन/परिणाम सूचक |
|---|---|---|---|
| (घ) विद्यालयमा जुनसुकै प्रकारको नियुक्ति पाई कार्यरत सबै शिक्षकहरु र जुन तहमा हाल अध्यापन जिम्मेवारी पाएको छ त्यसै तहको मोड्युलमा भाग लिन पाउने मापदण्डलाई दृष्टिगत गरी आवश्यकता प्रोफायल तयारी, सहभागी छनोट तथा मोड्युल सञ्चालन व्यवस्था मिलाउने । | अगुवास्रोतकेन्द्र / शैताके | प्रथम-तेस्रो | विद्यालयद्वारा हवहरुमा प्रेषित आवश्यकता प्रस्तावका आधारमा सहभागी शिक्षक छनोट भएको हुने । |
| (ङ) प्रत्येक मोड्युल सञ्चालन गर्न तालिम कार्यशाला खण्डको प्रथम दिन प्रथम सेसनमा सवै सहभागीहरुलाई १।१ प्रतिका दरले मोड्युल सामग्री (स्रोत सामग्री सहितको) वितरण व्यवस्था गर्न सक्ने गरीका पूर्ण तयारीका साथ मोड्युल सञ्चालन गर्ने । | अगुवास्रोतकेन्द्र / शैताके | प्रथम-तेस्रो | प्रत्येक सहभागीले मोड्युल सामग्री सहित मोड्युलका ३ ओटै खण्ड पुरा गरेको हुने । |
| (च) प्रत्येक १० दिने मोड्युलका तीनओटै भागहरु पूरा गरेका शिक्षकहरुलाई शैक्षिक जनशक्ति विकास केन्द्रद्वारा पठाइएका मोड्युल सम्पन्न प्रमाणपत्र जारी गर्ने । | अगुवास्रोतकेन्द्र / शैताके | प्रथम-तेस्रो | मोड्युल पुरा गर्ना साथ सबै शिक्षकहरुले प्रमाणपत्र पाएको हुने । |
| (छ) सेवाक्षेत्र भित्रका १० दिने मोड्युल पुरा गरेका शिक्षकहरु कार्यरत सबै माध्यमिक विद्यालयहरुको TIP उपलब्धि विवरण प्रत्येक वर्षको वैशाख र कार्तिकमा सङ्कलन गरी जिल्ला स्तरीय समष्टिगत प्रतिवेदन तयार पारेर जिल्ला शिक्षा कार्यालय र शैक्षिक तालिम केन्द्र "क" समक्ष पेश गर्ने । | अगुवास्रोतकेन्द्र / शैताके | प्रथम-तेस्रो | प्रत्येक स्रोतकेन्द्रबाट ६।६ महिनामा जिशिका र शैताकेका समष्टिगत TIP उपलब्धी प्रतिवेदन प्रयोगका लागि उपलब्ध हुने । |
| (ज) आफ्नो केन्द्रका लागि खटिएका सीएफओसँग सहकार्य गरी संयुक्त, रुपमा प्रत्येक वर्ष सेवाक्षेत्र भित्रका कम्तिमा १०।१० जना शिक्षकहरुलाई अन्तर विद्यालय भ्रमण गराउने । | अगुवास्रोतकेन्द्र / शैताके/ सिएफओ | प्रथम-तेस्रो | प्रत्येक वर्ष १० जना माध्यमिक तहका शिक्षकहरुले अन्य ५ ओटासम्म विद्यालयहरुको अध्ययन भ्रमण सम्पन्न गर्ने । |
| (झ) जिल्ला भरीको सवै स्रोतकेन्द्रहरु र आफ्नो केन्द्रबाट ३ ओटै मोड्युल पुरा गरेका शिक्षकहरुलाई शैक्षिक जनशक्ति विकास केन्द्रबाट प्राप्त एकीकृत टिपिडी प्रमाण-पत्र जारी गर्ने । | अगुवास्रोत केन्द्र/शैताके | प्रथम-तेस्रो | तीनओटै १० दिने मोड्युल सम्पन्न गरेका शिक्षकहरुले समय मै एकीकृत टिपिडी प्रमाणपत्र प्राप्त गरेको हुने । |
| (ञ) अनुसूची-३ बमोजिमका शीर्षकगत खर्च विवरणअनुसार टिपिडी मोड्युल सञ्चालनको सम्पूर्ण खर्च व्यवस्था मिलाउने | अगुवास्रोतकेन्द्र / शैताके | प्रथम-तेस्रो | खर्चको मापदण्ड एवम् प्रकृयागत स्पष्टता सहित पारदर्शि ढङ्गले बजेट उपयो भएकौ हुने । |
| *५.५ शिक्षकको पेसागत विकास मोड्युल सञ्चालनका लागि सघन प्रशिक्षक प्रशिक्षण (१२ दिने) सञ्चालन* | | | |
| (क) आफ्नो तोकिएको सेवाक्षेत्र (जिल्ला) अर्न्तगत सवै स्रोतकेन्द्रहरूबाट १।१ जना रोष्टर प्रशिक्षक, तालिम केन्द्र र अगुवा स्रोतकेन्द्रबाट २।२ जना रोष्टर/प्रशिक्षक, जिशिकाबाट गत वर्ष TOT लिन छुट भएका सवै विनि/शाअ/उपसचिवहरूलाई देहायको विवरण सहित TOT मा सहभागी हुन छनोट व्यवस्था गर्ने ।<br>**TOT मा सहभागी हुन आउँदा साथै लिई आउनुपर्ने विवरण**<br>➢ हव स्तरीय TIP उपलब्धी प्रतिवेदन सारांश<br>➢ हव स्तरीय रूपमा गत वर्ष तयार गरिएका टिपिडी आवश्यकता प्रोफाइलका आधारमा तहगत (आधारभूत र माध्यमिक) शिक्षकहरूको टिपिडी आवश्यकता सारांश<br>➢ सम्पूर्ण कार्यरत तहगत शिक्षक र मोड्युलगत टिपिडी प्राप्त शिक्षक विवरण । | जिशिका/ शैताके | प्रथम-दोस्रो | तोकिएको मापदण्ड बमोजम १२७६ जना सहभागीको मनोनयन भएको हुने । |

| कम्पोनेन्ट नं./मुख्यमुख्य क्रियाकलाप/कार्यान्वयन विधि | जिम्मेवार/ निकाय | समयावधि/ चौमासिक | अनुगमन/परिणाम सूचक |
|---|---|---|---|
| (ख) उपरोक्त सहभागी विवरणका अतिरिक्त शैक्षिक तालिम केन्द्र दिपायल, सुर्खेत, काठमाडौं, कास्की र सुनसरीका हकमा क्षेशिनिमा कार्यरत गत वर्ष TOT लिन छुट भएका मध्ये सबै शाअ/प्रशिक्षक/उपसचिवहरूलाईसमेत र अन्यका हकमा उपयुक्तानुसार छनोट भई आएका सहभागीहरुलाई शैक्षिक जनशक्ति विकास कैन्द्रद्वारा प्रकाशित "प्रशिक्षक प्रशिक्षण निर्देशिका" का आधारमा १२ दिने TOT सञ्चालन गरी त्यसको उपलब्धि, अनुभव र भावी कार्यदिशा उल्लेखित प्रतिवेदन केन्द्रमा पेस गर्ने ॥ | शैताके | प्रथम-दोस्रो | १२७६ जनाले १२ दिने TOT पुरा गरेको विवरण सहितको प्रतिवेदन शैक्षिक जनशक्ति विकास केन्द्रमा उपलब्ध हुने । |
| *(५.६) संस्थागत विद्यालयका शिक्षक तालिमका लागि प्रशिक्षक प्रशिक्षण (१ हप्ते)* | | | |
| (क) संस्थागत विद्यालयका शिक्षकहरुका लागि तालिम सञ्चालन गर्न शैक्षिक जनशक्ति विकास केन्द्रले स्वीकृति वा सम्बन्धन प्रदान गरेपछि त्यस्ता निजी तालिम निकायहरुबाट प्रशिक्षक जनशक्ति छनोट गरी केन्द्रद्वारा उपलब्ध गराईने प्रशिक्षक प्रशिक्षण निर्देशिका बमोजिम प्रशिक्षक प्रशिक्षण सञ्चालन गर्ने र त्यसको उपलब्धि, अनुभव र भावी कार्यदिशा उल्लेखित प्रतिवेदन केन्द्रमा पेस गर्ने । | शैताके सुनसरी, काभ्रे, रुपन्देही, सुर्खेत र दिपायल | प्रथम-दोस्रो | १२५ जना प्रशिक्षकहरुले १ हप्ते तालिम पुरा गरेको विवरण सहितको प्रतिवेदन केन्द्रमा उपलब्ध हुने । |
| *५.७ प्रअहरूका लागि ३० दिने नेतृत्व क्षमता विकास तालिम (संस्थागत विद्यालयसमेत) सञ्चालन (३० दिने) (शैताके/अगुवास्रोतकेन्द्र)* | | | |
| (क) शैक्षिक जनशक्ति विकास केन्द्रद्वारा जारी प्रअ नेतृत्व क्षमता विकास तालिम कार्यान्वयन पुस्तिका २०६६ ले निर्दिष्ट गरेको कार्यविधि अनुसरण गरी आधारभूत तह (१-८ कक्षा) र माध्यमिक तह (१-१० वा १-१२ कक्षा) का लागि नियमानुसार नियुक्त सामुदायिक विद्यालयका प्रधानाध्यपकहरू मध्येलाई २५ जनालाई अगुवा स्रोतकेन्द्र वा शैताकेको समन्वयमा २ महिना अगावै मनोनयन गर्ने । | जिशिका | दोस्रो-तेस्रो | तोकिएको मापदण्डका बमोजिम १८७५ जना प्रअहरुको मनोनयन समयमै भएको हुने । |
| (ख) यसरी सहभागी मनोनयन गर्दा तोकिएको कोटाको २०% सम्म संस्थागत विद्यालयमा कार्यरत सोही तहका प्रिन्सिपलहरुलाई निजहरुको रुचीको आधारमा तालिम भत्ता नपाउँने गरी तालिम पुरा गर्ने सर्तमा समावेश गर्ने । | जिशिका | दोस्रो-तेस्रो | प्रत्येक जिल्लाबाट रुचीका आधारमा संस्थागत विद्यालयका प्रिन्सिपलहरु समेतको मनोनयन व्यवस्था कायम हुने । |
| (ग) उक्त तालिम कार्यान्वयन पुस्तिकाद्वारा निर्दिष्ट कोर्ष तथा कार्यविधि एवम् शैक्षिक जनशक्ति विकास केन्द्रबाट प्रकाशित तालिम स्रोत सामग्रीका आधारमा जिल्ला शिक्षा कार्यालयबाट मनोनित प्रअहरुलाई १० दिने तालिम कार्यशाला, १८ दिन बराबरको स्वाध्ययन खण्ड र २ दिनको सम्पर्क कक्षा गरी ३० दिने तालिम सञ्चालन गर्ने । | अगुवा स्रोतकेन्द्र/ शैताके | दोस्रो-तेस्रो | १८७५ जनाले १ महिने प्रअ नेतृत्व क्षमता विकास तालिम पुरा गरोको हुने । |
| *(५.८) प्रअका लागि नेतृत्व क्षमता विकास तालिम सञ्चालनका लागि १ हप्ते प्रशिक्षक प्रशिक्षण सञ्चालन* | | | |
| (क) शैक्षिक व्यवस्थापन सम्बन्धी विशेष योग्यता एवम् यस क्षेत्रमा कम्तिमा १० वर्षको नेतृत्व तहको अनुभव भएका उपसचिव/शाअ/प्रशिक्षक/विद्यालय निरीक्षक/प्रअ/रोस्टर प्रशिक्षक/स्रोतव्यक्ति मध्येबाट जिल्लाका लागि तोकिएको कोटा बमोजिम सहभागी मनोनयन गर्ने । | जिशिका/ शैताके | प्रथम-दोस्रो | तोकिएको आधारमा ७५ जना सहभागीहरुको मनोनयन समयमै सम्पन्न भएको हुने । |
| (ख) छनौट भई आएका विशेषज्ञ कर्मचारीहरुलाई शैक्षिक जनशक्ति विकास केन्द्रद्वारा जारी प्रशिक्षक प्रशिक्षण निर्देशिका बमोजिम १ हप्ते प्रशिक्षक प्रशिक्षण सञ्चालन गरी त्यसको उपलब्धि, अनुभव, भावी कार्यदिशा सहितको प्रतिवेदन केन्द्रमा पेस गर्ने । | शैताके दिपायल, धनुषा र रुपन्देही | प्रथम-दोस्रो | ७५ जना प्रशिक्षकहरुले १ हप्ते तालिम पुरा गरेको विवरण सहितको प्रतिवेदन केन्द्रमा पेस हुने । |

| कम्पोनेन्ट नं./मुख्यमुख्य क्रियाकलाप/कार्यान्वयन विधि | जिम्मेवार/ निकाय | समयावधि/ चौमासिक | अनुगमन/परिणाम सूचक |
|---|---|---|---|
| *५.९ शैताकेबाट वार्षिक रूपमा आधारभूत/माध्यमिक तहको गरी जम्मा ८ ओटा नमुना टिपिडी मोड्युल सामग्री सबै हवहरूको प्रयोगका लागि छपाई र वितरण* | | | |
| (क) प्रत्येक शैताकेबाट आर्थिक वर्षभरी आफ्नो तालिम केन्द्रबाट प्रत्यक्ष रूपमा माध्यमिक तहका लागि र जिशिकाबाट तोकिएको नजिकको स्रोतकेन्द्रसँग आवद्ध भई आधारभूत तहको मोड्युलहरू सञ्चालन गर्दाका दौरान तयार गरिएका मोड्युल सामग्रीहरू मध्ये दुवै तहको कम्तिमा चारचार ओटा का दरले जम्मा ८ ओटालाई टिपिडी नमूना मोड्युल सामग्रीका रूपमा तयार गर्ने र सेवाक्षेत्र भित्र अगुवा/स्रोतकेन्द्रले वर्षभरी प्रयोग गरेका मध्ये उत्कृष्ट सामग्री छनोट गरी दुवै तहका लागि उत्कृष्ट मोड्युल सामग्री-सङ्ग्रह तयार गर्ने । | सबै शैताके | प्रथम-तेस्रो | ८ ओटाका दरले जम्मा २३२ ओटा टिपिडी नमूना मोड्युल सामग्रीको सिआरसी छपाईका लागि तयार हुने । |
| (ख) यसरी विकास गरिएका नमूना टिपिडी मोड्युल सामग्रीहरू र उत्कृष्ट मोड्युल सामग्री-सङ्ग्रह छपाई गरी शैक्षिक तालिम केन्द्र "क" द्वारा आफ्नो क्षेत्रीय सेवाक्षेत्र अन्तर्गत रहेका सबै तालिम हबहरू (स्रोतकेन्द्र र अगुवास्रोतकेन्द्र/शैताके) मा र शैक्षिक तालिम केन्द्र "ख" द्वारा आफ्नो सेवाक्षेत्र अर्न्तगत रहेका सबै तालिम हवहरु (स्रोतकेन्द्र र अगुवास्रोतकेन्द्र) मा कम्तिमा पाँचपाँच सेटका दरले वितरण व्यवस्था मिलाउने । यसरी वितरण गर्दा सेवा क्षेत्र भित्रका सबै अगुवा/स्रोतकेन्द्रहरुले समान रूपले सामग्री पाएको सुनिश्चित गर्न तालिम केन्द्रहरुबीच समन्वय गर्ने । | शैताके/ जिशिका | प्रथम-तेस्रो | ५/५ सेट नमूना टिपिडी मोड्युल सामग्री प्रत्येक हवमा प्रयोगका लागि उपलब्ध हुने । |
| (ग) जिल्लाका अगुवास्रोतकेन्द्र र स्रोतकेन्द्रहरुमा तालिम सामग्री ढुवानी व्यवस्थालाई प्रभावकारी तुल्याउन जिल्ला शिक्षा कार्यालय र सम्बन्धित शैक्षिक तालिम केन्द्रले संयुक्त संयन्त्र निर्माण गरी त्यसको परिचालन गरी तोकिएको हवमा तोकिएकै संख्यामा तोकिएकै समयभित्र वितरण व्यवस्था मिलाउने । | शैताके/ जिशिका | प्रथम-तेस्रो | सवै तालिम हवहरुमा नमुना मोड्युल सामग्री तथा मोड्युल सन्दर्भ सामग्री लगायतका स्रोत सामग्रीहरु प्रयोगका लागि उपलब्ध हुने । |
| *५.१० शैताकेहरूबाट अगुवा स्रोतकेन्द्रमा स्रोतव्यक्ति/रोस्टरद्वारा सञ्चालन गर्ने टिपिडी/प्रअ तालिमका लागि स्थलगत Technical Backstopping/तालिम पश्चात सहायता सञ्चालन* | | | |
| (क) टिपिडी कार्यान्वयन पुस्तिकामा उल्लेखित कार्यविधिअनुसार आफ्नो सेवाक्षेत्र भित्रका सबै जिल्लाका स्रोतकेन्द्र र अगुवा स्रोतकेन्द्रहरुमा मुलतः टिपिडी आवश्यकता प्रशोधिकरण, मोड्युल सामग्री विकास र मोड्युल सञ्चालन जस्ता मुख्यमुख्य कार्यखण्डहरुको प्रभावकारी सञ्चालन गर्न स्थलगत क्षमता विकास स्किमका रुपमा स्थलगत प्राविधिक सहायता उपलब्ध गराउने । (यस कार्यका लागि अनुसूची-४ का साधन प्रयोग गर्नुपर्ने) | सबै शैताके | प्रथम-तेस्रो | ११२८ हवहरुमा शैताकेका विशेषज्ञहरुको स्थलगत सहायताबाट स्रोतकेन्द्र र अगुवास्रोतकेन्द्रका ७००० जना प्रशिक्षकहरुको क्षमता अभिवृद्धि हुने । |
| (ख) आफ्नो सेवाक्षेत्र अन्तर्गतका सबै जिल्ला शिक्षा कार्यालयहरुलाई मुलतः टिपिडी मोड्युल सामग्री स्वीकृती, प्राविधिक अडिट सञ्चालन, वार्षिक मोड्युल सञ्चालन कार्ययोजना स्वीकृति लगायतको कार्यगर्न तालिम समन्वय समिति र जिशिकालाई स्थालगत रुपमा प्राविधिक सहजीकरण प्रदान गर्ने । | सबै शैताके | प्रथम-तेस्रो | ७५ ओटै जिशिकामा शैताकेहरुबाट स्थलगत प्राविधिक सहजीकरण उपलब्ध हुने । |
| (ग) सवाक्षेत्र भित्र कृयाशिल सबै अगुवा/स्रोतकेन्द्रहरुबाट चालु आर्थिक वर्षका लागि तयार गरिएका टिपिडी आवश्यकता प्रस्तावको सारांश सङ्कलन गरी तालिम केन्द्रगत प्रस्ताव सारांश सङ्ग्रह वि.सं. २०६८ फाल्गुन मसान्त भित्र शैक्षिक जनशक्ति विकास केन्द्रमा अनिवार्य रूपमा पेस गर्ने । | सबै शैताके | प्रथम-तेस्रो | देशभरका सबै ११२८ ओटा तालिम हवहरुबाट सङ्कलित २९ ओटा शैक्षिक तालिम केन्द्रगत टिपिडी आवश्यकता प्रस्ताव सारांश-सङ्ग्रह |

| *कम्पोनेन्ट नं./मुख्यमुख्य क्रियाकलाप/कार्यान्वयन विधि* | *जिम्मेवार/ निकाय* | *समयावधि/ चौमासिक* | *अनुगमन/परिणाम सूचक* |
|---|---|---|---|
| | | | समष्टीगत केन्द्रीय टिपिडी आवश्यकता प्रतिवेदन तयारी प्रयोजनका लागि शैक्षिक जनशक्ति विकास केन्द्रमा उपलब्ध हुने । |
| *५.११ जिशिकाबाट तालिम हव क्लस्टरमा टिपिडी/प्रअ तालिम गतिविधिको स्थलगत प्राविधिक अडिट र तालिम समन्वय समितिद्वारा अनुगमन लगायत टिपिडी मोड्युल सामग्री अनुमोदन कार्यसञ्चालन* | | | |
| (क) आफ्नो क्षेत्रीय सेवा क्षेत्र अर्न्तगत प्राविधिक अडिट कार्यका लागि प्रत्येक क्लस्टर फोकल अफिसर (विनि/शाअ/उस) लाई रु ३,६१०।- का दरले र अनुगमन सहायता कार्यका लागि प्रत्येक जिशिका लाई रु ४०,०००।- का दरले हुन आउने रकम हिसाव गरी एकमुष्ट बजेट सेवाक्षेत्र भित्रका जिशिकामा प्रमथ चौमासिक भित्र पेश्की स्वरुप सोझै पठाउने । | शैताके क | प्रथम-तेस्रो | जिशिकामा तालिम समन्वय समितिको कार्य, अनुगमन सहायता र प्राविधिक अडिटका लागि बजेट उपलब्ध हुने । |
| (ख) शिक्षा विभागको च.नं. ३६ मिति २०६६/०८/०८ को निर्देशनअनुसार प्रत्येक जिशिकामा जिशिअको संयोजनमा सवै सीएफओ, अगुवा स्रोतकेन्द्र र सम्बन्धित शैताकेको सदस्यता रहने गरी गठित तालिम समन्वय समिति देहाय कार्यविवरण (TOR) बमोजिम प्रभावकारित कृयाशिलता रहेको सुनिश्चित गर्न ।<br>तालिम समन्वय समितिको कार्यविवरण :<br>१. स्रोतकेन्द्र र अगुवास्रोतकेन्द्रगत कोटा र बजेट सहितको वार्षिक मोड्युल कार्यान्वयन कार्ययोजना तयार गरी जिल्ला भर लागू गर्ने ।<br>२. सबै स्रोतकेन्द्र, अगुवास्रोतकेन्द्र र शैताकेहरुले तयार गरेको टिपिडी मोड्युल सामग्रीहरु सिएफओको स्वीकृतिका आधारमा अनुमोदन गर्ने ।<br>३. अनुमोदित सामग्रीहरु सबै सहभागीहरुले प्राप्त गर्ने सुनिश्चित गरी टिपिडी मोड्युल सञ्चालनको अनुमति प्रदान गर्ने ।<br>४. सबै सिएफओबाट मोड्युल सञ्चालन प्रकृयाको प्राविधिक अडिट कार्य सम्पन्न गराउने । | जिशिका/ शैताके | प्रथम-तेस्रो | कार्यविवरण अनुसार समितिले कार्यसम्पादन गरेको हुने । |

| *कम्पोनेन्ट नं./मुख्यमुख्य क्रियाकलाप/कार्यान्वयन विधि* | *जिम्मेवार/ निकाय* | *समयावधि/ चौमासिक* | *अनुगमन/परिणाम सूचक* |
|---|---|---|---|
| (ग) निम्नानुसारको कार्यविवरण अनुसार सिएफओहरुद्वारा जिल्ला भित्रका सबै तालिम हवहरुमा मोड्युल सञ्चालन प्रकृयाको प्राविधिक अडिट कार्य गराउने ।<br>**क्लस्टर फोकल अधिकृतको लागि प्राविधिक अडिट कार्य विवरण:**<br>१. प्रत्येक स्रोतकेन्द्र/अगुवा स्रोतकेन्द्रद्वारा सम्पादन गर्ने टिपिडी आवश्यकता प्रोफाइल तयारी, मोड्युल सामग्री तयारी र मोड्युल सञ्चालन प्रकृया र प्रमाणपत्र जारी गर्ने कार्यको सुपरीवेक्षण गरी तोकिएको प्रकृया पुरा गरेको (Process Compliance) सुनिश्चित गर्ने ।<br>२. कार्यान्वयन पुस्तिकामा तोकिएबमोजिम आफ्नो क्लस्टरभित्र कार्यरत कम्तिमा १० जना शिक्षकलाई २ दिन सम्मको अन्तरविद्यालय भ्रमण गराउने ।<br>३. जिशिकामा शैताके समेतको उपस्थितिमा सम्पन्न हुने प्रत्येक प्रअ बैठक र स्रोतव्यक्ति बैठकमा टिपिडी मोड्युल सञ्चालन प्रगति समीक्षा प्रस्तुत गर्ने ।<br>४. प्रत्येक हव स्तरीय विद्यालयगत समष्टिगत TIP उपलब्धी प्रतिवेदन प्रत्येक ६।६ महिनामा सङ्कलन र समीक्षा गर्ने । | जिशिका/ सिएफओ | प्रथम-तेस्रो | कार्यविवरण अनुसार सिएफओहरुले कार्यसम्पादन गरेको हुने । |
| (घ) जिशिकामा वर्ष भरी सञ्चालन हुने प्रत्येक प्रअ बैठक र स्रोतव्यक्ति बैठकमा "टिपिडी कार्यान्वयन समीक्षा" विषयलाई एउटा एजेण्डा बनाउने र ती बैठकमा सम्बन्धित शैताकेका प्रमुख वा जिम्मेवार अधिकृतलाई सहभागी गराउने । | जिशकि | प्रथम-तेस्रो | सबै प्रअ बैठक तथा स्रोतव्यक्ति बैठकको टिपिडी कार्यान्वयनका विषयवस्तु एजेण्डामा सम्बन्धित शैताकेको प्रमुख/अधिकृत सहजीकरणबाट सञ्चालन हुने । |
| (ङ) शैताकेहरुबाट स्रोतकेन्द्र/अगुवा सोतकेन्द्रमा स्थलगत प्राविधिक सहायता सञ्चालन गर्दा तथा जिशिकाबाट स्रोतकेन्द्र/अगुवा स्रोतकेन्द्रमा टिपिडी कार्यान्वयनका लागि अनुगमन सहायता सञ्चालन गर्दा सङ्लग्न अनुसूची-१० को साधन लाई आधार बनाउने । | जिशिका/ शैताके | प्रथम-तेस्रो | ठोस कार्यढाँचा (साधन) मा आधारित कार्य सञ्चालन गरी प्रतिवेदन पेस भएको हुने । |
| *५.१२ टिपिडी लगायत प्र.अ तालिम कार्यान्वयनबाट प्राप्त क्षेत्रीय तालिम नतिजासम्बन्धी जिशिका/क्षेशिनिसहित सबै सरोकार समूह समक्ष समीक्षा सबै गोष्ठी सञ्चालन* | | | |
| (क) प्रत्येक शैक्षिक तालिम केन्द्र "क" द्वारा आफ्नो क्षेत्रीय सेवा क्षेत्र भित्र चालु आर्थिक वर्ष भरमा सञ्चालन गरिएका टिपिडी लगायतका तालिम गतिविधिहरूको प्रगति प्रतिवेदन प्रत्येक CFO र शैक्षिक तालिम केन्द्रबाट सङ्कलन गरी | सबै शैताके | दोस्रो-तेस्रो | समष्टिगत क्षेत्रीय प्रगति प्रतिवेदन प्रवोधिकरण एवम् समीक्षाका लागि उपलब्ध हुने । |

| *कम्पोनेन्ट नं./मुख्यमुख्य क्रियाकलाप/कार्यान्वयन विधि* | *जिम्मेवार/ निकाय* | *समयावधि/ चौमासिक* | *अनुगमन/परिणाम सूचक* |
|---|---|---|---|
| देहायको खाकामा त्यसको समष्टीगत क्षेत्रीय तालिम प्रगति प्रतिवेदन तयार गर्ने ।<br>**प्रतिवेदन मुख्य अंश**<br>१. कार्यक्रमको उपलब्धि विवरण<br>२. कार्यान्वयन अनुभव समीक्षा<br>३. सञ्चालित तालिम र कक्षाकोठामा त्यसको उपयोगको अवस्थासम्बन्धी लेखाजोखा<br>४. तालिमको नतिजाका लागि शैताकेको जवाफदेहिता प्रकृया<br>५. अपेक्षित सुधारका लागि कार्यविधि निर्धारण | | | |
| (ख) यसरी तयार गरिएको समष्टिगत प्रतिवेदनका आधारमा आफ्नो क्षेत्रीय सेवा क्षेत्र भित्र कार्यरत क्षेत्रीय शिक्षा निर्देशकहरू, जिशिअहरू, शिक्षकका पेसागत सङ्घ/सङ्गठनका प्रतिनिधिहरू, स्थानीय शिक्षा सम्बन्धी काम गर्ने समूह/सङ्गठनका प्रतिनिधिहरू, शैताके टीम, अगुवा/स्रोतकेन्द्रका प्रतिनिधि तथा CFO प्रतिनिधिहरू सहभागी रहने क्षेत्रीय तालिम नतिजा समीक्षा गोष्ठी सम्बन्धित क्षेशिनिको संयोजनमा सञ्चालन व्यवस्था मिलाउने । | क्षेशिनि | दोस्रो-तेस्रो | सुधारका लागि साझा सम्झदारी सहितको ठोस कार्यसूची तयार हुने । |
| *५.१३ प्रा.स.हरूका लागि १ महिने व्यवस्थापन तालिम सञ्चालन* | | | |
| (क) शिक्षा विभाग र पाँचओटै क्षेत्रीय शिक्षा निर्देशनालयहरूबाट देशभर कार्यरत मध्ये तालिम अप्राप्त जेष्ठ प्रा.स.हरू छनोट गराउने व्यवस्था मिलाउने । | शिक्षा विभाग/ क्षेशिनि/ जिशिका | प्रथम-दोस्रो | समयमै प्रा.स.हरु मनोनयन भएको हुने । |
| (ख) छनोट भएका सहभागीहरुलाई शैजविकेबाट जारी तालिम प्याकेज सङ्ख्यामा छपाई/उत्पादन गरी त्यसका आधारमा तालिम सञ्चालन गर्ने । | शैताके तनहुँ | प्रथम-दोस्रो | २० जना प्रा.स.हरुले १ महिने शैक्षिक व्यवस्थापन तालिम कोर्स पुरा गर्ने । |
| *५.१४ सघन आवश्यकता अध्ययनका आधारमा एसएलसी परीक्षाको नतिजा कमजोर देखिएका कर्णाली अञ्चल लगायत १५ ओटा लक्षित जिल्लाका मावि तहका अङ्ग्रेजी, गणित र विज्ञान विषयका शिक्षकहरुलाई विद्यार्थी सिकाई उपलब्धि सुधार तालिम सञ्चालन (१० दिने)* | | | |
| (क) प्राप्त कोटाका आधारमा एसएलसी नतीजामा कमजोर रहेका विद्यालयमा कार्यरत अङ्ग्रेजी, गणित र विज्ञान शिक्षकहरुमध्ये शैक्षिक तालिम केन्द्रसँग समन्वय गरी सहभागी छनोट गर्ने । (लक्षित जिल्लाहरु- कर्णाली अञ्चलका ५ ओटै जिल्लाहरु, सप्तरी, सल्यान, नवलपरासी, अर्घाखाँची, गुल्मी, कैलाली, अछाम, कन्चनपुर, डौटी, डडेलधुरा) | जिशिका | प्रथम-तेस्रो | लक्षित विद्यालयहरुबाट विषयगत शिक्षकहरु तालिमका मनोनीत भएको हुने । |
| (ख) सघन आवश्यकता अध्ययनका आधारमा तालिम कोर्स, तालिम स्रोत सामग्री र प्रशिक्षण गाईड लाइन विकास गर्ने | शैताके धनुषा, रुपन्देही, सुर्खेत र दिपायल | प्रथम-तेस्रो | तालिममा सबै सहभागिहरुका लागि तालिम कोर्स र तालिम स्रौतसामग्री तथा प्रशिक्षकका लागि प्रशिक्षक गाईडलाइन उपलब्ध हुने । |
| (ग) छनोट भएका सहभागी शिक्षकहरुलाई नियमित टिपिडी मोड्युलका अतिरिक्त पेसागत सहायताका रुपमा १० दिने तालिम सञ्चालन गर्ने । | शैताके धनुषा, रुपन्देही, सुर्खेत र दिपायल | प्रथम-तेस्रो | ३७५ जना शिक्षकले १० दिने तालिम पुरा गरेका हुने । |

| कम्पोनेन्ट नं./मुख्यमुख्य क्रियाकलाप/कार्यान्वयन विधि | जिम्मेवार/ निकाय | समयावधि/ चौमासिक | अनुगमन/परिणाम सूचक |
|---|---|---|---|
| *५.१५ कर्णाली अञ्चलका ५ ओटै जिल्लाहरुमा कार्यरत माध्यमिक तहका शिक्षकहरु (कम्प्यूटर सञ्चालनमा रहेका विद्यालयहरुबाट) लाई आवश्यकता अध्ययनका आधारमा ICT क्षमता विकाससम्बन्धी Customatize training package सञ्चालन (१० दिने)* | | | |
| (क) प्राप्त कोटाका आधारमा खास गरी विद्युतीय सुविधा उपलब्ध माध्यमिक विद्यालयहरुका मुलतः अङ्ग्रेजी, विज्ञान र गणित विषयहरु अर्थात कम्प्यूटर विषय अध्यापन गर्ने शिक्षकहरु मध्येबाट सहभागी छनोट व्यवस्था मिलाउने । | जिशिका | प्रथम-तेस्रो | लक्षित विद्यालयहरुबाट विषयगत शिक्षकहरु तालिमका मनोनीत भएको हुने । |
| (ख) विगत आ.व.को अनुभवसमेतका आधारमा कर्णाली अञ्चलका जिल्लाहरूमा कार्यरत माध्यमिक तहका शिक्षकहरूको ICT सम्बन्धी तालिमको आवश्यकता अध्ययनका आधारमा Customized Training Package तयार गरी टिपिडी मोड्युलका अतिरिक्त पेसागत सहायताका रुपमा १० दिनको तालिम सञ्चालन गर्ने । | शैताके सुर्खेत | प्रथम-तेस्रो | कर्णाली अञ्चलका विद्यालयका ५० जना माध्यमिक तहका शिक्षकको Customize ICT सम्बन्धी तालिम पुरा गर्ने । |
| *५.१७ तालिम हवहरुमा सञ्चालन हुने टिपिडी लगायतका तालिम सञ्चालन कार्यमा तात्कालिक सुधार ल्याउन एवम् संस्थागत प्रभावकारीतामा प्रत्यक्ष बढोत्तरी ल्याउन कार्यमूलक अनुसन्धान सञ्चालन* | | | सुधारका लागि अनुसन्धान प्रतिवेदन कार्यान्वयनका लागि उपलब्ध हुने । |
| (क) टिपिडी आवश्यकता प्रशोधिकरण, मोड्युल सामग्री विकास तथा मोड्युल सञ्चालन कार्यलाई निरन्तर सुधार गर्न उपयोगी हुने खालका कार्यमूलक अनुसन्धान र विशेष प्रकृतिका कार्यहरूमा मामला अध्ययन कार्य तालिम केन्द्रमा कार्यरत सबै प्रशिक्षकहरूबाट सम्पन्न गर्ने व्यवस्था मिलाउने | सबै शैताके | प्रथम-तेस्रो | सबै प्रशिक्षकहरुबाट कार्यमूलक अनुसन्धान सञ्चालन भएको हुने । |
| (ख) यसरी तयार गरिएका प्रतिवेदन/दस्तावेजहरू मध्ये नमूना दस्तावेज आवको अन्त्यमा आफ्नो सेवाक्षेत्र भित्रका सबै स्रोतकेन्द्र, अगुवास्रोत केन्द्र र शैताके तथा केन्द्र समक्ष अनिवार्य रूपमा पठाउने व्यवस्था गर्ने । | सबै शैताके | प्रथम-तेस्रो | वार्षिक रुपमा प्रकाशित सबै दस्तावेजहरु सबै तालिम निकायहरुमा उपलब्ध हुने । |
| *५.१८ स्वीकृत वार्षिक कार्यक्रम कार्यान्वयनमा प्रत्यक्ष सुधार गर्न मार्गदर्शन एवम् आवश्यक सूचना प्रबोधिकरणका लागि उपयोगी हुने गरी न्यूजलेटर प्रकाशन* | | | |
| (क) टिपिडी लगायत तालिम गतिविधिहरूको प्रभावकारिता र गुणस्तर अभिवृद्धि गर्न सहयोगी हुने खालका अनुसन्धान मूलक लेख/रचनाहरू तालिम केन्द्रमा कार्यरत सबै प्रशिक्षकहरूबाट अनिवार्य रूपमा र वाह्य विशेषज्ञहरूबाट ऐच्छिक रूपमा समेत सङ्कलन/सम्पादन गर्न लगाई तिनीहरूका सङ्गालोका रूपमा सुधारिएको न्युजलेटर प्रकाशन गर्ने । | सबै शैताके | प्रथम-तेस्रो | सुधारिएको न्यूज लेटरको सीआरसी छपाईका लागि उपलब्ध हुने । |
| (ख) यसरी प्रकाशित न्युजलेटर कम्तिमा २।२ प्रतिका दरले आफ्नो सेवा क्षेत्र भित्रका स्रोतकेन्द्रहरुमा पुग्ने गरी पठाउने व्यवस्था गर्ने । | सबै शैताके | प्रथम-तेस्रो | सबै शैताकेहरुबाट प्रकाशित न्युजलेटर प्रयोगका लागि उपलब्ध हुने । |
| *५.१९ विनि/स्रोतव्यक्ति/रोस्टर/प्रशिक्षकहरुका लागि अनलाईन/अफलाईन पेसागत विकास कोर्सका कार्यक्रम सञ्चालन (३ महिनासम्मको)* | | | |
| (क) तालिम हवहरूमा कार्यरत रोस्टर प्रशिक्षक, प्रशिक्षक र स्रोतव्यक्ति तथा क्षेत्र र जिल्ला तहमा कार्यरत विनि, शा.अ/उपसचिव हरूलाई मुलतः प्रभावकारी टिपिडी मोड्युल सञ्चालन एवम् प्रअ नेतृत्व क्षमता विकास तालिम सञ्चालनका लागि सैद्धान्तिक एवम् व्यावहारिक क्षमता विकास गर्ने उद्देश्यले अनलाईन/अफलाईन विधिबाट सञ्चालन गरिने ३ महिने विशेष पेसागत क्षमता विकास तालिमका लागि तोकिएको कोटा बमोजिम | शैताके क | प्रथम-तेस्रो | लक्षित जनशिक्त मनोनयन भई तालिममा खटिने । |

| कम्पोनेन्ट नं./मुख्यमुख्य क्रियाकलाप/कार्यान्वयन विधि | जिम्मेवार/ निकाय | समयावधि/ चौमासिक | अनुगमन/परिणाम सूचक |
|---|---|---|---|
| सहभागि छनोट गर्ने । | | | |
| (ख) शैक्षिक जनशक्ति विकास केन्द्रबाट जारी गरिएको अनलाइन/अफलाइन पेसागत क्षमता विकास तालिम सञ्चालन पुस्तिका-२०६७ मा निर्दिष्ट कोर्स र कार्यविधि बमोजिम तालिम सञ्चालन गर्ने । | शैताके क | प्रथम-तेस्रो | २२५ जनाले अनलाइन/अफलाइन कोर्स पुरा गरेको हुने । |
| *५.२० परम्परागत विद्यालय (गुम्बा, मदर्सा, गुरुकूल) का शिक्षकहरूका लागि टिपिडि) खांकामा मिल्ने गरी तालिम सञ्चालन*<br>*५.१६ विशेष आवश्यकता भएका बालबालिकालाई शिक्षण गर्ने स्रोत शिक्षकका लागि टिपिडी खांकामा तालिम सञ्चालन* | | | |
| (क) जिल्ला भरीमा सञ्चालित यस्ता विद्यालयमा कार्यरत शिक्षकहरुमध्ये सम्बन्धित शैक्षिक तालिम केन्द्रद्वारा तोकिएको मापदण्ड र कोटा बमोजिम सम्बन्धित तालिमका लागि सहभागीहरु छनोट गर्ने । | जिशिका | प्रथम-तेस्रो | लक्षित विद्यालयहरुमा कार्यरत शिक्षकहरु तालिमका लागि मनोनयन भएको हुने । |
| (ख) यसरी परम्परागत विद्यालयहरुबाट छनोट भएका शिक्षकहरुलाई शैक्षिक जनशक्ति विकास केन्द्रद्वारा उपलब्ध गराइने तालिम कोर्ष, तालिम स्रोत सामग्री र प्रशिक्षण गाइडलाइन बमोजिम टिपिडी आवश्यकता पुरा गर्ने गरी विशेष क्षमता विकास तालिमका रूपमा १० दिन एकै पटक (at a stretch) तालिम सञ्चालन गर्ने । | शैताके सुनसरी, वारा, काभ्रे, तनहुँ, रुपन्देही र काठमाडौं | प्रथम-तेस्रो | १५० जना शिक्षकहरुले गुम्बा, गुरुकुल र मदर्शा विद्यालयसम्बन्धी तालिम पुरा गरेको हुने । |
| (ग) शैक्षिक जनशक्ति विकास केन्द्रद्वारा उपलब्ध गराइने तालिम कोर्ष, तालिम स्रोत सामग्री र प्रशिक्षण गाइडलाइन बमोजिम टिपिडी आवश्यकता पुरा गर्ने गरी विशेष कक्षा/विद्यालयहरुमा अध्यापन गर्ने शिक्षकहरुमध्येबाट मनोनयन भएका शिक्षकहरुलाई विशेष क्षमता विकास तालिमका रूपमा १० दिन एकै पटक (at a stretch) तालिम सञ्चालन गर्ने । | शैताके सुनसरी, काभ्रे, तनहुँ, दिपायल | प्रथम-तेस्रो | १०० जना स्रोत शिक्षकले विशेष आवश्यकतासम्बन्धी तालिम पुरा गरेको हुने । |
| *५.२१ शैजविकेको भौतिक सूविधाको सूदृढीकरण/मर्मत संभार योजनाका आधारमा कार्य सञ्चालन शैताकेस्तर* | | | |
| (क) तालिम केन्द्रको भौतिक सुविधा एवम् उपकरणहरूको मर्मत सुधारसम्बन्धी विस्तृत योजना (आवश्यकता विश्लेषण, लागत अनुमान, प्राथमिकीकरण) तयार गरी प्राथमिकता प्राप्त कार्यका लागि नियमानुसार खर्च व्यवस्था गर्ने । | सबै शैताके | प्रथम-तेस्रो | शैताकेहरुको सेवा सुविधा सुदृढ भई तालिम सञ्चालन लगायतका कार्यमा सहजता आएको हुने । |
| (ख) प्रत्येक तालिम केन्द्रबाट तयार गरिएको मर्मत सुधार सम्बन्धी उक्त योजना तयार गरे लगत्तै त्यसको एक प्रति केन्द्रमा पठाउने । | सबै शैताके | प्रथम-तेस्रो | केन्द्रमा शैताकेको मर्मत संभार योजना उपलब्ध हुने । |
| *५.२२ सेवाक्षेत्र भित्रका अन्य शैताकेहरु अगुवा स्रोतकेन्द्र सम्मिलित वार्षिक कार्ययोजना तयारी गोष्ठी सञ्चालन तथा क्षेत्रीय टिपिडी योजना अध्यावधिक कार्य सञ्चालन* | | | |
| (क) स्वीकृत वार्षिक कार्यक्रमका आधारमा आफ्नो सेवाक्षेत्र भित्रका शैताकेहरु/अगुवा स्रोतकेन्द्र/जिशिकाका प्रतिनिधिहरु सम्मिलित गराई कार्यशालाका माध्यमबाट शैक्षिक तालिम केन्द्रगत वार्षिक कार्यक्रमको क्षेत्रीय कार्यान्वयन योजना तर्जुमा गर्ने । | शैताके क | प्रथम-तेस्रो | प्रत्येक जिल्ला/शैताकेको वार्षिक कार्यक्रम कार्यान्वयन योजना प्रयोगका लागि उपलब्ध हुने । |

